॥ श्री गणेशाय नमः ॥

ॐ

श्री परमात्मने नमः

॥ अथ औशनसीस्मृतिः ॥

॥ अथानुलोमप्रतिलोमजात्यन्तराणांनिरूपणवर्णनम् ॥

अतः परं प्रवक्ष्यामि जातिवृत्तिविधानकम् ।
अनुलोमविधानञ्च प्रतिलोमविधिं तथा ॥१॥

अब म जातिले गर्नुपर्ने काम तथा त्यसको (जन्मसम्बन्धी) सुल्टो (अनुलोम) र उल्टो (प्रतिलोम) विधि बताउँदछु ।

सान्तराकालसंयुक्तं सर्वं संक्षिप्य चोच्यते ।
नृपाद् ब्राह्मणकन्यायां विवाहेषु समन्वयात् ॥
जातः सूतोऽत्र निर्दिष्ट : प्रतिलोमविधिर्द्विजः ॥२॥

अनुलोम र प्रतिलोमका बीचमा जन्मनेको संयोग सहित सबैको सारसंक्षेप यहाँ बताइने छ । क्षत्रियले बाहुनीबाट विवाह गरी जन्माएको छोरो ‘सूत’ हुन्छ (विदुर आदि) र यो प्रतिलोम विधिको द्विज हुन्छ ।

वेदानहस्तथा चैषां धर्माणामनुबोधकः ॥३॥

सूत पुत्र वेदको अधिकारी हुँदैन केवल वेदधर्मको उपदेशक हुन्छ ।

सूताद्विप्र प्रसूतायां सूतो वेणुक उच्यते ।
नृपायामेव तस्यैव जातो यश्चर्मकारकः ॥४॥

सूत र बाहुनीको सन्तानलाई ‘वेणुक’ भनिन्छ । सूत र छेत्रिनीको सन्तानलाई ‘चर्मकार’ (चमार) भनिन्छ ।

ब्राह्मण्यां क्षत्त्रियाच्चौर्याद्रथकारः प्रजायते ।
वृत्तञ्च शूद्रवृत्तस्य द्विजत्वं प्रतिषिध्यते ॥५॥

क्षत्रियले बाहुनीबाट गोप्यरुपमा जन्माएको सन्तान ‘रथकार’ हुन्छ । रथकारको वृत्ति शूद्रवृत्ति हो । उसका लागि द्विजवृत्ति निषेधित छ ।

ब्राह्मण्यां वैश्यसंसर्गाज्जातो मागध उच्यते ।
वन्दित्वं ब्राह्मणानाञ्च क्षत्त्रियाणां विशेषतः ॥

**प्रशंसावृत्तिको जीवेद्वैश्यप्रेष्यकरस्तथा ॥७॥**

बाहुनी र वैश्यबाट जन्मने पुत्रलाई 'मागध' भनिन्छ । ती ब्राह्मण र विशेषतः क्षत्रियको स्तुति गायन गर्ने हुन्छन् । यिनको पेसा प्रशंसा-कर्म र वैकल्पिक पेसा वैश्यको दासता हो ।

**ब्राह्मण्यां शूद्रसंसर्गाज्जातश्चाण्डाल उच्यते ।**
**सीसमाभरणं तस्य कार्ष्णायसमथापि वा ॥८॥**
**बध्रीं कण्ठे समावध्य झल्लरीं कक्षतोऽपि वा ।**
**मलापकर्षणं ग्रामे पूर्वाह्ने परिशुद्धिकम् ॥९॥**
**नापराह्ने प्रविष्टोऽपि वहिर्ग्रामाच्च नैर्ऋते ।**
**पिण्डीभूता भवन्त्यत्र नोचेद् वध्या विशेषतः ॥१०॥**

बाहुनी र शूद्रबाट जन्मने पुत्रलाई 'चाण्डाल' भनिन्छ । यिनले सिसा वा फलामका आभुषणादि लगाउँछन् तथा घाँटीमा चर्मपट्टी र काखीमा भल्लर बाँद्धछन् । मध्याह्न भन्दा अगावै गाऊँको सरसफाई गरी फोहोर उठाउँछन्, मध्याह्नपछि गाऊँमा पस्दैनन् र गाऊँ बाहिर नैर्ऋत्य दिशामा बस्दछन् । ती सबै एकै ठाउँमा गुजुमुज्ज भई बसून्, नबसे मारिन योग्य छन् ।

**चाण्डालाद्वैश्यकन्यायां जातः श्वपच उच्यते ।**
**श्वमांशभक्षणं तेषां श्वान एव च तद्बलम् ॥११॥**

वैश्या र चाण्डालबाट जन्मने 'श्वपच' हुन्छ । कुकुरको मासु खानु र कुकुरको बलमा बाँच्नु यिनको दिनचर्या हो ।

**नृपायां वैश्यसंसर्गादायोगव इति स्मृतः ।**
**तन्तुवाया भवन्त्येव वसुकांस्योपजीविनः ॥**
**शीलिकाः केचिदत्रैव जीवनं वस्त्रनिर्मिते ॥१२॥**

छेत्रिनी कन्या र वैश्यबाट जन्मने सन्तानलाई 'आयोगव' वा 'जुलाहा' भनिन्छ । यिनले कपडा बुन्ने वा काँसका भाँडा बेचेर जीवन चलाउन् । कपडा बनाउनेलाई 'शीलिक' भनिन्छ ।

**आयोगवेन विप्रायां जातास्ताम्रोपजीविनः ।**
**तस्यैव नृपकन्यायां जातः सूनिक उच्यते ॥१३॥**

आयोगव र बाहुनीबाट जन्मने सन्तान ताम्रकार हुन्छ । आगोगव र छेत्रिनीबाट जन्मने सन्तान 'सुनार' हुन्छ ।

**सूनिकस्य नृपायान्तु जाता उद्बन्धकाः स्मृताः ।**

**निर्णेजयेयुर्वस्त्राणि अस्पृश्याश्च भवन्त्यतः ॥१४॥**

सुनार र छेत्रिनीबाट जन्मने सन्तानलाई ‘उद्‌बन्धक’ भनिन्छ, यिनले कपडा धुने काम गर्दछन् र अस्पृश्य हुन्छन् ।

**नृपायां वैश्यतश्चौर्यात् पुलिन्दः परिकीर्तितः ।**
**पशुवृत्तिर्भवेत्तस्य हन्युस्तान् दुष्टसत्त्वकान् ॥१६॥**

छेत्रिनी र वैश्यबाट गोप्यरुपमा जन्मने सन्तान ‘पुलन्द’ (म्लेच्छ) हुन्छ र यिनको वृत्ति पशुवृत्ति हुन्छ । यिनले हिंस्रक जनावर मारेर जीविका चलाउन् ।

**नृपायां शूद्रसंसर्गाज्जातः पुक्कश उच्यते ।**
**सुरावृत्तिं समारु! मधुविक्रयकर्मणा ॥१७॥**

छेत्रिनी र शूद्रबाट जन्मने सन्तानलाई ‘पुक्कश’ भनिन्छ । जसले मदिरा बनाउने र बिक्रीको पेशा गरी जीवन चलाउँछन् ।

**कृतकानां सुराणाञ्च विक्रेता पाचको भवेत् ।**
**पुक्कशाद्वैश्यकन्यायां जातो रञ्जक उच्यते ॥१८॥**

यिनले अरुले बनाएको मदिरा बेच्ने र पकाउने पनि गर्दछन् । पुक्कश र वैश्याबाट जन्मिने ‘रजक’ हुन्छ ।

**नृपायां शूद्रतश्चौर्याज्जातो रञ्जक उच्यते ।**
**वैश्यायां रञ्जकाज्जातो नर्त्तको गायको भवेत् ॥१९॥**

छेत्रिनी र शूद्रको गोप्य संसर्गबाट पनि ‘रजक’ जन्मिन्छ । रजक र वैश्याबाट जन्मिने ‘नर्तक’ वा ‘गायक’ हुन्छ ।

**वैश्यायां शूद्रसंसर्गाज्जातो वैदेहिकः स्मृतः ।**
**अजानां पालनं कुर्यान्महिषीणां गवामपि ॥२०॥**

शूद्र र वैश्याबाट जन्मिने सन्तानलाई ‘वैदेहिक’ भनिन्छ । यिनले बाख्रा, भैंसी र गाई पालन गर्नू ।

**दधिक्षीराज्यतक्राणां विक्रयाज्जीवनं भवेत् ।**
**वैदेहिकात्तु विप्रायां जाताश्चर्मोपजीविनः ॥२१॥**

साथै दही, दूध, घिउ, मोही आदि बेचेर जीवन चलाउनु । बाहुनी र वैदेहिकबाट जन्मिने सन्तान ‘चमार’ हुन्छ ।

**नृपायामेव तस्यैव सूचिकः पाचकः स्मृतः ।**
**वैश्यायां शुद्रतश्चौर्याज्जातश्चक्री च उच्यते ॥२२॥**

छेत्रिनी र वैदेहिकबाट 'सूचिकार' वा 'भान्छे' जन्मन्छ । वैश्या र शुद्रबाट गोप्यरुपले जन्मने सन्तानलाई 'तेली' भनिन्छ ।

**तैलपिष्टकजीवी तु लवणं भावयन् पुनः ।**
**विधिना ब्राह्मणः प्राप्य नृपायान्तु समन्त्रकम् ॥२३॥**

तेलीले तील पेलेर तेल निकालेर वा नुनको काम गर्ने व्यवसाय गर्दछ । मन्त्र पढी  विधिपूर्वक बाहुनले विवाह गरेकी क्षेत्रिनीबाट ...।

**जातः सुवर्ण इत्युक्तः सानुलोमद्विजः स्मृतः ।**
**अथ वर्णक्रियां कुर्वन्नित्यनैमित्तिकीं क्रियाम् ॥२४॥**

...जन्मने सन्तान अनुलोम सुवर्ण द्विज भनी चिनिन्छ । यस्ता सन्तानले नित्य (सन्ध्या आदि) र नैमित्तिक (जातकर्म आदि) कर्म ..।

**अश्वं रथं हस्तिनं वा वाहयेद्वा नृपाज्ञया ।**
**सैनापत्यञ्च भैषज्यं कुर्याज्जीवेत्तु वृत्तिषु ॥२५॥**

राजाको आज्ञाले घोडा-रथ-हाती हाँक्न वा सवारी गर्न वा सेनापति बन्ने कर्म र वैद्यको पेसाबाट जीविका चलाउनू ।

**नृपायां विप्रतश्चौर्यात् सञ्जातो यो भिषक् स्मृतः ।**
**अभिषिक्तनृपस्याज्ञां परिपाल्येत्तु वैद्यकम् ॥२६॥**

बाहुनले लुकिछिपी छेत्रिनीबाट जन्माएको सन्तानलाई 'भिषक्' भनिन्छ र उसले राजाको आज्ञा लिई चिकित्साकर्म गरी जीवन चलाउनू ।

**आयुर्वेदमथाष्टाङ्गं तन्त्रोक्तं धर्ममाचरेत् ।**
**ज्यौतिषं गणितं वाऽपि कायिकीं वृत्तिमाचरेत् ॥२७॥**

भिषक्ले अष्टाङ्ग आयुर्वेद वा तन्त्रोक्त धर्मको पालना गर्नू । ज्योतिष वा गणित विद्याले जीवन चलाउनू ।

**नृपायां विधिना विप्राज्जातो नृप इति स्मृतः ।**
**नृपायां नृपसंसर्गात् प्रमादाद् गूढजातकः ॥२८॥**

बाहुन र नृप (छेत्रिनी) को विधिपूर्वकको संसर्गबाट जन्मने (नृप) 'छेत्री' हुन्छ । नृपले छेत्रिनीबाट जन्माएको नाजायज सन्तान 'गूढ' भनी चिनिन्छ ।

**सोऽपि क्षत्त्रिय एव स्यादभिषेके च वर्जितः ।**
**अभिषेकं विना प्राप्य गोज इत्यभिधायकः ॥२९॥**

गूढ पनि क्षत्रिय नै हुन्छ तर राजतिलक र अभिषेकका लागि योग्य हुँदैन यसैले उसलाई 'गोज' पनि भनिन्छ ।

**सर्वन्तु राजवृत्तस्य शस्यते प(ट्ट)दवन्दनम् ।**
**पुनर्भूकरणे राज्ञां नृपकानीन एव च ॥३०॥**

सबै प्रकारका राजाका चरण वन्दनीय हुन्छ । गोजले दोश्रो विवाह गरेमा राजा समान हुन्छ ।

**वैश्यायां विधिना विप्राज्जातो श्यम्बष्ठ उच्यते ।**
**कृष्याजीवो भवेत्तस्य चथैवाग्नेयवृत्तिकः ॥३१॥**

बाहुन र वैश्याको विधिपूर्वकको विवाहबाट जन्मिने सन्तानलाई 'अम्बष्ठ' भनिन्छ । कृषिकर्म, दाउराको बेचविखन,... ।

**ध्वजिनी जीविका वाऽपि अम्बष्ठाःशस्त्रजीविनः ।**
**वैश्यायां विप्रतश्चौर्यात् कुम्भकारःस उच्यते ॥३२॥**

रासन ठेक्का वा हतियारको आपूर्ति यिनको वृत्ति हो । बाहुन र वैश्याको अवैध सन्तानलाई 'कुम्भकार' भनिन्छ ।

**कुलालवृत्त्या जीवेत नापिता वा भवन्त्यतः ।**
**सूतके प्रेतके वाऽपि दीक्षाकालेऽथ वापनम् ॥३३॥**

यिनले माटाको भाँडा बनाउने वा नाईको काम गर्नू । सूतक वा जुठोमा वा  ब्रतवन्धमा कपाल काटेर जीवन धानुन् ।

**नाभेरूर्ध्वं तु वपनं तस्मान्नापित उच्यते ।**
**कायस्थ इति जीवेत्तु विचरेच्च इतस्ततः ॥३४॥**

नाइटो भन्दा माथिको रौं काट्नाले यिनलाई 'नापित' भनिन्छ र 'कायस्थ' भनी चिनिई यताउता घुम्दै जीविका चलाउँछन् ।

**काकाल्लौल्यं यमात् क्रौर्यं स्थपतेरथ कृन्तनम् ।**
**आद्याक्षराणि संगृह्य कायस्थ इति कीर्तितः ॥३५॥**

कागको चञ्चलता, यमराजको क्रूरता र स्थपति (कालिगढ)को कलाका शुरुका अक्षर का+य+स्थ बाट 'कायस्थ' हुन्छ र यी स्वभावैले चञ्चल, क्रूर तथा कपाल काट्न निपुण हुन्छन् ।

**शूद्रायां विधिना विप्राज्जातः पारशवो मतः ।**
**भद्रकादीन् समाश्रित्य जीवेयुःपूजकाःस्मृताः ॥३६॥**

बाहुन र शूद्राको वैध सन्तानलाई 'पारशव' मानिएको छ । भद्रक आदि श्रेष्ठ पर्वतमा बसी यिनीहरु जीवन चलाउँछन् र 'पूजक' भनेर चिनिन्छन् ।

**शिवाद्यागमविद्याद्यैस्तथामण्ड(र्द)लवृत्तिभिः ।**
**तस्यां वै चौरसो वृत्तो निषादो जात उच्यते ॥३७॥**

यी पारशवहरु शिव आद्यागम वा मण्डलीय वृत्तिले जीवन गुजारा गर्दछन् । यस्ता पारसवको औरस पुत्रलाई 'निषाद' भनिन्छ ।

**वने दुष्टमृगान् हत्वा जीवनं मांसविक्रयम् ।**
**नृपाज्जातोऽथ वैश्यायां गृह्यायां विधिना सुतः ॥३८॥**

सेनाको निषादले दुष्ट जङ्गली जनावर मारी तिनको मासु बेची जीवन चलाउनू । छेत्री र वैश्याको वैध सन्तानले ...।

**वैश्यवृत्त्या तु जीवेत क्षत्त्रधर्मं न चाचरेत् ।**
**तस्यां तस्यैव चौरेण मणिकारः प्रजायते ॥३९॥**

वैश्यवृत्ति अपनाओस्, क्षत्रीय धर्ममा नचलोस् । छेत्री र वैश्याको अवैध सन्तानलाई 'मणिकार' भनिन्छ ।

**मणीनां राजतां कुर्यान्मुक्तानां वेधनक्रियाम् ।**
**प्रवालानाञ्च सूत्रित्वं शाखानां वलयक्रियाम् ॥४०॥**

यिनको मणि रङ्गाउनु, मोति प्वाल पार्नु, मुँगाको माला बनाउनु वा बाला बनाउनु पेसा हो ।

**शूद्रस्य विप्रसंसर्गाज्जात उग्र इति स्मृतः ।**
**नृपस्य दण्डधारः स्याद्दण्डं दण्डयेषु सञ्चरेत् ॥४१॥**

बाहुन र शूद्राबाट जन्मनेलाई 'उग्र' भनिन्छ । यिनले राजाको दण्ड लिनू र अपराधीलाई दण्ड दिनू ।

**तस्यैव चौर्यसंवृत्त्या जातः शुण्डिक उच्यते ।**
**जातदुष्टान् समारोप्य शुण्डाकर्मणि योजयेत् ॥४२॥**

बाहुन र शूद्राको अवैध सन्तानलाई 'शुण्डिक' (जल्लाद) भनिन्छ । यिनलाई जन्मजात अपराधीको प्रमुख बनाउनु र जल्लादकर्ममा नियुक्ति गर्नू ।

**शूद्रायां वैश्यसंसर्गाद्विधिना सूचकः स्मृतः ।**
**सूचकाद्विप्रकन्यायां जातस्तक्षक उच्यते ॥४३॥**

वैश्य र शूद्राबाट जन्मने वैध सन्तानलाई 'सूचिकार' भनिन्छ । सूचिकार र बाहुनीबाट जन्मने सन्तानलाई 'तक्षक' भनिन्छ ।

**शिल्पकर्माणि चान्यानि प्रासादलक्षणं तथा ।**
**नृपायामेव तस्यैव जातो यो मत्स्यबन्धकः ॥४४॥**

शिल्पकर्म र भवन बनाउनु तिनको कार्य हो । सूचिकार र छेत्रिनीबाट जन्मने सन्तान 'माझी' हुन्छ ।

**शूद्रायां वैश्यतश्चौर्यात् कटकार इति स्मृतः ।**
**वशिष्ठशापात्त्रेतायां केचित् पारशवास्तथा ॥४५॥**

वैश्य र शूद्राको अवैध सन्तानलाई 'कटकार' भनिन्छ । त्रेतायुगमा वशिष्ठको श्रापले कैयौं पारसव भएका थिए ।

**वैखानसेन केचित्तु केचिद्भागवतैन च ।**
**वेदशास्त्राबलम्वास्ते भविष्यन्ति कलौ युगे ॥४६॥**

हरिभजन या ईश्वर भक्तिले गर्दा कतिपय मानिस त आउने कलि युगमा पनि वेद जान्ने हुन्छन् ।

**कटकारास्ततः पश्चान्नारायणगणाः स्मृताः ।**
**शाखा वैखानसेनोक्ता तन्त्रमार्गविधिक्रियाः ॥४७॥**

तिनमा कटकार लाई नारायणका व्यक्ति भनिनेछ । तन्त्रमतको विधिले यस्तो कर्म गर्नेलाई वैखानस शाखाका ऋषि भनिएको छ ।

**निषेकाद्याः श्मशानान्ताः क्रियाः पूजाङ्गसूचिकाः ।**

**पञ्चरात्रेण वा प्राप्तं प्रोक्तं धर्मं समाचरेत्॥४८॥**

पुंसवनदेखि अन्तिम संस्कार सम्मका १६ संस्कार यिनको हुन्छ । यसैले यी सूचिक  पूज्य हुन्छन्, श्रेष्ठ हुन्छन् । यिनले पञ्चरात्रमा बताइएको धर्म पालना गर्नू ।

**शूद्रादेव तु शूद्रायां जातः शुद्र इति स्मृतः ।**
**द्विजशुश्रूषणपरः पाकयज्ञपरान्वितः ॥४९॥**

शूद्रले शूद्राबाट जन्माउने सन्तानलाई शूद्र भनिन्छ । द्विजको सेवा र पाकयज्ञमा लाग्ने ...।

**सच्छूद्रं तं विजानीयादसच्छूद्रस्ततोऽन्यथा ।**
**चौर्यात् काकवचो ज्ञेयश्चाश्वानां तृणवाहकः ॥५०॥**

शूद्र उत्तम हुन्छ, यसो नगर्ने शूद्र निन्दनीय हुन्छ । शूद्राबाट अवैधरुपमा ‘काकवच’ जन्मिन्छन् र घोडालाई घाँस खुवाउने काम गर्छन् भनिएको छ ।

**एतत् संक्षेपतः प्रोक्तं जातिवृत्तिविभागशः ।**
**जात्यन्तराणि दृश्यन्ते संकल्पादित एव तु ॥५१॥**

जीविका र वृत्ति अनुसारका जातिका बारेमा संक्षेपमा मैले बताएँ । मनको संकल्प अनुसार अरु जाति पनि देखिने गर्दछन् ।

**॥ औशनसीस्मृतिः समाप्ता ॥**
**॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको औशनस स्मृतिको नेपाली भावानुवाद समाप्त भएको छ ॥**

सबैको कल्याण होस् !